

क्वयेर युथ ग्रुप

**Queer Youth Group**

दर्ता नं : २४४९३५/०७७/०७८

स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

**नेपाल संवत् ११४१ चौला १३**
**२०७७ चैत १८ गते**




का.मु. सचिवज्यू,
भाषा आयोग,
यन्ताबुँ, शंखमूल, यैँ (काठमाडौँ) ।

**विषय : पारलैङ्गिक व्यक्तिहरूको भाषिक अधिकार सम्बन्धी सिफारिस गरिपाउँ ।**

महोदय,

आज मार्च ३१ तारिखका दिन अन्तर्राष्ट्रिय रूपमा ***पारलैङ्गिक दृश्यताको अन्तर्राष्ट्रिय दिवस*** (***International Transgender Day of Visibility***) मनाइँदै छ। यसै दिवसको उपलक्षमा हामी उपरोक्त सम्बन्धमा लैङ्गिक पहिचानका आधारमा सिमान्तकृत पारलैङ्गिक (Transgender) जनसमुदायको भाषिक अधिकार सम्बन्धी यहाँहरूको ध्यानाकर्षण गराउन चाहन्छौँ।

हामी यस क्वयेर युथ ग्रुप लगायत थुप्रै अनौपचारिक समूह र लूज नेटवर्कहरू पारलैङ्गिक व्यक्तिहरूको अधिकारका क्षेत्रमा कार्यरत छौँ। पारलैङ्गिक व्यक्तिहरूले आफ्नो पहिचान सहितको परिचयपत्र पाउनुपर्ने, विभेद हुन नहुने लगायतका मागहरू राख्दै राज्यका विभिन्न निकायहरूको ध्यानाकर्षण गराउँदै आएका छौँ।

नेपालमा हाल सम्म पनि 'पारलैङ्गिक' शब्द र त्यसको परिभाषाले औपचारिक मान्यता पाउन सकेको छैन । यस शब्दले औपचारिक मान्यता नपाउँदा पारलैङ्गिक व्यक्तिहरूको पहिचान, उचित र सम्मानजनक शब्दले सम्बोधन भई आत्मसम्मानपूर्वक बाँच्न पाउने अधिकार कुण्ठित हुन पुगेको छ । जन्मँदा इङ्गित गरिएको लैङ्गिकता भन्दा फरक लैङ्गिक पहिचान भएका व्यक्तिहरूलाई 'पारलैङ्गिक व्यक्ति' वा अङ्ग्रेजीमा 'Transgender person' भनेर चिनिन्छ। तसर्थ संविधानले प्रत्याभूत गराएको कानूनको दृष्टिमा सबै समान हुनुपर्ने तथा उचित र सम्मानजनक शब्दले सम्बोधन भई आत्मसम्मानपूर्वक बाँच्न पाउने अधिकार र भाषिक अधिकार समेतको संरक्षणका लागि पारलैङ्गिक व्यक्तिहरूसँग सम्बन्धित देहायका तीन शब्दहरू र तिनका उल्लेखित परिभाषाहरूले औपचारिक मान्यता पाउने गरि अनुमोदन गर्न गराउन निर्णय गर्नका लागि भाषा आयोग ऐन २०७४ बमोजिम सिफारिस गरिपाउँ भनि यो निवेदन पेश गर्दछौँ।

उल्लेखित तीन शब्द र तिनका परिभाषाहरू देहाय बमोजिम छन् :-

१) ***पारलैङ्गिक व्यक्ति*** (अङ्ग्रेजीमा : ***Transgender person*** वा ***Trans person***) भन्नाले जन्मँदा यौनाङ्गका आधारमा इङ्गित गरिएको लैङ्गिकता भन्दा फरक लैङ्गिक पहिचान भएका व्यक्ति भनेर बुझ्नुपर्छ ।

२) ***पारलैङ्गिक महिला*** (अङ्ग्रेजीमा : ***Transgender woman*** वा ***Trans woman***) भन्नाले जन्मँदा यौनाङ्गका आधारमा पुलिङ्गी इङ्गित गरिएको महिला भनेर बुझ्नुपर्छ ।

ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३
http://fb.com/QYGnepal/
qygnepal
QueerYouthGroup



क्वयेर युथ ग्रुप

**Queer Youth Group**

दर्ता नं : २४४१३५/०७७/०७८

स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

---

३) *पारलैङ्गिक पुरुष* (अङ्ग्रेजीमा : ***Transgender man*** वा ***Trans man***) भन्नाले जन्मँदा यौनाङ्गका आधारमा स्त्रीलिङ्गी इङ्गित गरिएको पुरुष भनेर बुझ्नुपर्छ।

यस बमोजिमको सिफारिसलाई यहाँको वार्षिक प्रतिवेदनमा पनि उल्लेख गर्न अनुरोध गर्दछौँ।

माथि उल्लेखित शब्दावली र परिभाषाहरू अन्तर्राष्ट्रिय प्रचलन तथा राष्ट्रिय प्रचलन बमोजिमै छन्। यस निवेदनका साथ प्रमाणपूर्जी सरह देहायका दस्तावेजहरू सूचिकृत गर्न चाहन्छौँ।

1. यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (यौभिकयौता) : आधारभूत अवधारणा https://nepalcfc.org/basic_sogiesc_nepali/
2. Yogyakarta Principles +10, 2017 https://yogyakartaprinciples.org/principles-en/yp10/
3. Definitions, UN Free & Equal, United Nations Human Rights Office https://www.unfe.org/definitions/
4. Transgender Fact Sheet, United Nations Human Rights Office of the High Commissioner https://www.unfe.org/wp-content/uploads/2017/05/UNFE-Transgender.pdf
5. A glossary: Defining transgender terms, September 2018, Vol 49, No. 8, American Psychological Association https://www.apa.org/monitor/2018/09/ce-corner-glossary
6. Blueprint for the Provision of Comprehensive Care for Trans People and Trans Communities in Asia and The Pacific, 2015, Asia Pacific Transgender Network, page xiii https://www.who.int/hiv/pub/transgender/blueprint-trans-paho/en/
7. Glossary, International Lesbian, Gay, Bisexual, Trans and Intersex Association (ILGA) Europe https://ilga-europe.org/sites/default/files/ilga-europe_glossary_final_170714_www.pdf
8. Frequently asked questions on health and sexual diversity: an introduction to key concepts. World Health Organization (WHO/FWC/GER/16.2) https://apps.who.int/iris/handle/10665/255340
9. New York City Commission on Human Rights Legal Enforcement Guidance on Discrimination on the Basis of Gender Identity or Expression: Local Law No. 3 (2002); N.Y.C. Admin. Code § 8-102(23), II. DEFINITIONS https://www1.nyc.gov/site/cchr/law/legal-guidances-gender-identity-expression.page





रुक्शना कपाली

कार्यकारी निर्देशक

ईमेल: queeryouthgroup.nepal@gmail.com

सम्पर्क नं : +९७७-९८०८२६२६९१

ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३

 http://fb.com/QYGnepal/

 qygnepal  QueerYouthGroup